


**सर्वोच्च अदालत, एक न्यायाधीशको इजलास**
**माननीय न्यायाधीश श्री मीरा खडका**
**आदेश**
**०७७-WO-०९७३ (०७७-FN-०५०९)**

मुद्दाः उत्प्रेषण।

रुक्सना कपाली ------------------------------------------------------------ निवेदक

**विरूद्ध**

प्रधानमन्त्री तथा मन्त्री परिषदको कार्यालय, सिंहदरबार, काठमाडौंसमेत ------ विपक्षी

यस्मा के कसो भएको हो ? निवेदकको माग बमोजिमको आदेश किन जारी हुनु नपर्ने हो ? आदेश जारी हुन नपर्ने मनासिब आधार, कारण र प्रमाण भए सोसमेत खुलाई सूचना म्याद प्राप्त भएको मितिले बाटाको म्याद बाहेक १५(पन्ध्र) दिनभित्र विपक्षी नं. १, ४, ५, ६, ७, ८, ९, १०, १३, १४ र १५ का हकमा महान्यायाधिवक्ताको कार्यालय मार्फत र विपक्षी नं.२, ३, ११, १२ र १६ का हकमा आफै वा आफ्नो कानून बमोजिमको प्रतिनिधिमार्फत लिखित जवाफ पेश गर्नु भनी विपक्षीहरूका नाममा म्याद सूचना जारी गरी लिखित जवाफ परे वा अवधि व्यतित भएपछि नियमानुसार पेश गर्नु।

साथै निवेदकले अन्तरिम आदेशको माग गरेतर्फ विचार गर्दा, दुवै पक्ष राखी छलफल गराई अन्तरिम आदेश हुने नहुने सम्बन्धमा विचार गर्न उपयुक्त हुने देखिएकोले अन्तरिम आदेश छलफल सम्बन्धमा मिति २०७८।१।१३।२ गते पेशी तारेख तोकी सो को सूचना विपक्षीहरु र महान्यायाधिवक्ताको कार्यालयलाई दिई नियमानुसार पेश गर्नू।

न्यायाधीश

इति संवत् २०७७ साल चैत्र ३१ गते रोज ३ शुभम् ------------------------------।